## काठमाडौं महानगरपालिका नगर कार्यपालिकाको देश्रो (मितिः २०७४ असार ६ गते मंगलबार बसेको) वैठकका निर्णयहरु

१. स्थानीय तहको निर्वाचन २०७४ अन्तर्गत मिति २०७४ जेष्ठ २६ गते सम्पन्न काठमाडौं महानगरपालिकाको नगर कार्यपालिकाको निर्वाचनबाट निर्वाचित तपसिलमा उल्लेखित नगर कार्यपालिकाका सदस्यहरुलाई काठमाडौं महानगरपालिका नगर कार्यपालिकाको आज बसेको दोश्रो बैठकमा हार्दिक स्वागत गर्दै वधाई एवं सफल कार्यकालको कामना गर्ने ।

**तपसिल**

| क्र.सं. | नाम, थर | ठेगाना |
|---|---|---|
| १. | लक्ष्मी श्रेष्ठ | काठमाडौं महानगरपालिका, वडा नं. ६ |
| २. | रमिता कमल स्थापित | काठमाडौं महानगरपालिका, वडा नं. २५ |
| ३. | रश्मी खड्का | काठमाडौं महानगरपालिका, वडा नं. १४ |
| ४. | कान्ता अधिकारी गौतम | काठमाडौं महानगरपालिका, वडा नं. २६ |
| ५. | हिरादेवी पोखरेल | काठमाडौं महानगरपालिका, वडा नं. ३२ |
| ६. | पासाङ नुर्वु लामा | काठमाडौं महानगरपालिका, वडा नं. ६ |
| ७. | दिपक गोर्खाली राई | काठमाडौं महानगरपालिका, वडा नं. २९ |
| ८. | प्रेम पोडे पुजारी | काठमाडौं महानगरपालिका, वडा नं. १७ |

२. स्थानीय तहको निर्वाचनबाट निर्वाचित काठमाडौं महानगरपालिकाका प्रमुख, उपप्रमुख, वडा अध्यक्ष र वडा सदस्यहरुको पदवहाली भइसकेको सन्दर्भमा जनभावना र जनप्रतिनिधिहरुले मतादाता समक्ष गरेको प्रतिवद्धता बमोजिम महानगरपालिकाको विकास, निर्माण र शहरी सेवा प्रवाह सम्बन्धी कार्यहरु द्रुत गतिमा अगाडि वढाउन आवश्यक भएको र यसका लागि महानगरपालिकाका वडाहरुलाई विकास कार्य र सेवा प्रवाहको मूख्य केन्द्रको रुपमा विकसित गर्न वडाहरुमार्फत विभिन्न विकास कार्यहरु सञ्चालन गर्न उपयुक्त देखिएकोले चालु आर्थिक वर्ष २०७३/७४ को लागि विनियोजित मुल शीर्षकको बजेटमा घटीवढी नहुने गरी तपसिल बमोजिम मूल शीर्षक अन्तर्गतको उप-शीर्षकहरुमा कार्यक्रम तथा बजेट थपघट हुने गरी बजेट व्यवस्था गरी चालु आर्थिक वर्ष २०७३।७४ भित्रै कार्यक्रम सञ्चालन गर्ने गरी खर्च गर्ने मार्गदर्शन र अख्तियारी सहित सबै वडाहरुलाई समान रुपमा तपसिल बमोजिम विभन्न उपशीर्षक अन्तर्गतको कार्यक्रम तथा कार्यहरु सञ्चालन गर्न बजेट निकासा पठाउने ।

**तपसिल**

| घटाउने | | | थप गर्ने | | |
|---|---|---|---|---|---|
| लेखा कोड नं. | खर्च शीर्षक | रकम रु.हजार मा | लेखा कोड नं. | खर्च शीर्षक | रकम रु.हजार मा |
| ८००००० | पूर्वाधार सुधार | ५,४४,०० | ८००००० | सडक तथा फुटपाथ | ३२०,०० |
| | | | ८००००० | ढुंगा ईंटा छाप्ने | २२४,०० |
| ८१०००० | वातावरण सुधार | १,६०,०० | ८१०००० | ढल मर्मत सम्भार | ९६,०० |
| | | | ८१०००० | सडक सरसफाई **(क्लिन द सिटी अभियान)** | ६४,०० |
| ७२०००० | अनुदान अन्य खर्च | ८,०० | ७२०८०० | अतिथि सत्कार | ८,०० |
| | **जम्मा** | **७,१२,००** | | **जम्मा** | **७,१२,००** |

**(नोटः प्रत्येक वडाको लागि समान रुपमा सडक तथा फुटपाथ रु. १० लाख, ढुंगा ईंटा छाप्ने ७ लाख, ढल मर्मत सम्भार रु. ३ लाख, सडक सरसफाई रु. २ लाख र अतिथि सत्कार(जलपान) रु. २५ हजार गरी जम्मा २२ लाख २५ हजार)**

३. काठमाडौं महानगरपालिकामा मिति २०७४ जेष्ठ १७ गते वुधवारदेखि निर्वाचित जनप्रनिधिहरुको पद वहाली भैसकेकोले निजहरुलाई कानून बमोजिम सेवा सुविधा उपलब्ध गराउनुपर्नेमा हालसम्म पनि स्थानीय तहले संविधानप्रदत्त प्राप्त हक अधिकारको प्रयोग गर्ने गरी स्थानीय तहको कार्यसञ्चालन सम्बन्धी कानूनहरु प्राप्त भई नसकेको र काठमाडौं महानगरपालिकाको आर्थिक वर्ष २०७३।७४ को बजेटमा जनप्रतिनिधिहरुको सुविधा शीर्षकमा बजेट व्यवस्था समेत नगरेको सन्दर्भमा पछि कानून बमोजिम हुने गरी तपसिल बमोजिम बजेट व्यवस्था गरी कार्यसञ्चालन, व्यवस्थापनका लागि तत्काल देहाय बमोजिमको दायित्व वहन गर्ने ।

**तपसिल**

| **घटाउने** | | | **थप गर्ने** | | |
|---|---|---|---|---|---|
| लेखा कोड नं. | खर्च शीर्षक | रकम रु.हजार मा | लेखा कोड नं. | खर्च शीर्षक | रकम रु.हजार मा |
| ७००००० | तलब पारिश्रमिक | ३५,०० | ७००१०१ | जनप्रतिनिधि पारिश्रमिक | २५,०० |
| | | | ७००००० | जनप्रतिनिधि अन्य सुविधा | १०,०० |
| | **जम्मा** | **३५,००** | | **जम्मा** | **३५,००** |

क) जनप्रतिनिधि अन्य सुविधा, बैठक भत्ता र खाजा खर्चको सम्बन्धमा देहाय बमोजिम गर्ने ।

| **क्र.सं.** | **अध्यक्षता गर्ने पदाधिकारी** | **बैठक भत्ता** | **परिवहन भत्ता** |
|---|---|---|---|
| १. | प्रमुख तथा उपप्रमुख | १५०० | १००० |
| २. | नगरकार्यपालिका सदस्य, वडा सदस्य | १००० | १००० |
| ३. | आमन्त्रित सदस्य | १००० | १००० |

माथि उल्लेखित पदाधिकारीले अध्यक्षता गर्ने बैठकमा उपस्थित निर्वाचित पदाधिकारीहरु, कर्मचारी र आमन्त्रित सदस्यले काठमाडौं महानगरपालिकाबाट कुनै सवारी सुविधा प्राप्त गरेको भए परिवहन भत्ता उपलब्ध गराईने छैन् ।

ख) जनप्रतिनिधि अन्य सुविधा अन्तर्गत हाललाई देहाय बमोजिम सुविधा उपलब्ध गराउने ।

| **क्र.सं.** | **पदाधिकारी** | **मोवाईल सेट** | **सिमकार्ड** | **मोवाईल, टेलिफोन खर्च मासिक** |
|---|---|---|---|---|
| १. | प्रमुख तथा उप-प्रमुख | खरिद गरी सेट नै उपलब्ध गराउने | १ | विल बमोजिम |
| २. | नगर कार्यपालिका सदस्य | रु. ३०,००० | १ | २५०० |

४. काठमाडौं महानगरपालिका, काठमाडौं महानगरपालिकाका निर्वाचित पदाधिकारीहरु र काठमाडौं महानगरपालिका नगर कार्यपालिकाका अन्तर्गतका विभाग, महाशाखा, शाखा, एकाई, सचिवालय, आयोजना, वडा कार्यालयका कर्मचारीहरु पक्ष वा विपक्ष भई विभिन्न अड्डा अदालतहरुमा मुद्दा दर्ता गर्न तथा प्रत्यर्थी भई निवेदन, फिरादपत्र, लिखित जवाफ, प्रतिउत्तरपत्र दर्ता गर्न तथा अन्य जे जो गर्नुपर्छ सो को अख्तियारी प्राप्त व्यक्ति भई कार्य गर्न काठमाडौं महानगरपालिका नगर कार्यपालिका, नगर सभा र प्रमुखको हकमा काठमाडौं महानगरपालिकाको प्रमुखले, उप्रमुखको हकमा काठमाडौं महानगरपालिकाका उपप्रमुखले, वडा अध्यक्ष, वडा कार्यालय र वडा समितिको हकमा वडा अध्यक्षले, विभाग, महाशाखा, शाखा, एकाई, सचिवालय, आयोजनाको हकमा तत् सांगठनिक संरचनाका प्रमुखले र वडा सदस्य, पदाधिकारी, कर्मचारीको नाम किटान भएकोमा तत् तत् व्यक्तिले मुद्दामा पक्ष भई कार्य गर्ने अख्तियारी दिने ।

५. काठमाडौं महानगरपालिकाकाको पदपूर्ति समितिको मिति २०७३।५।२७ मा प्रकाशित विज्ञापन नं. १६।०७३।७४, कार्यक्षमता मूल्यांकनबाट अधिकृत स्तर सातौं उपनिर्देशक (प्रा.) पदमा वढुवाको लागि दरखास्त माग गरी पर्न आएका दरखास्त उपर कार्वाही भई पदपूर्ति समितिको मिति २०७३।११।२९ को निर्णयानुसार प्रावधिक सेवा, अधिकृत स्तर छैठौं तह सिभिल ईन्जिनीयर पदबाट प्राविधिक सेवा अधिकृतस्तर सातौं तह, उप-निर्देशिक पदमा तपसिलमा उल्लेखित उम्मेदवारहरु वढुवा सिफारिस भएकोमा पदपूर्ति समितिको कार्वाही उपर चित्त नबुझी उक्त विज्ञापनमा दरखास्त दिने ई. दामोदार नारायण सुवाल समेत ५ जनाले प्रचलिन कानून बमोजिम संघीय मामिला तथा स्थानीय विकास मन्त्रालयका सचिवसमक्ष पुनरावेदन गर्नुभएकोमा मन्त्रालयको च.नं. ३८५६ मिति २०७४।२।१८ को पत्रानुसार पदपूर्ति समितिको उल्लेखित विज्ञापन अनुसारको पदको वढुवा सिफारिस मिलेको हुँदा बदर गर्न नपर्ने भनी पुनरावलोकनकर्ताको पुनरावेदन खारेज भईसकेकोले निजहरुलाई वढुवा नियुक्तिको लागि निर्णय गर्न प्रचलित कानून बमोजिम पेश हुन आएको हुँदा तपसिलमा उल्लिखित उम्मेदवारहरुलाई पदपूर्ति समितिले वढुवा सिफारिस गरेको सूचना प्रकाशन भएको मितिले ३६ औं दिनबाट जेष्ठता कायम हुने गरी नियुक्ति दिने ।

**तपसिल**

| क्र.सं. | नाम, थर | वढुवा भएको पद |
|---|---|---|
| १. | बीर वहादुर खड्का | उप-निर्देशक |
| २. | निर्मलराज बराल | उप-निर्देशक |
| ३. | घनश्याम पौडेल | उप-निर्देशक |
| ४. | रामबाबु महतो | उप-निर्देशक |

६. नेपालको संवैधानिक व्यवस्थाले साविकका स्थानीय निकायलाई पुर्नसंरचना गर्दै अधिकार सम्पन्न स्थानीय सरकारको रुपमा स्थानीय तह सम्बन्धी व्यवस्था गरेको छ । संविधानमा उल्लेखित २२ वटा एकल अधिकार र १५ वटा साझा अधिकारको प्रयोग गर्न र काठमाडौं महानगरपालिकाले महानगर स्तरीय गुणात्मक र प्रतिस्पर्धी शहरी सेवा प्रवाह गर्न काठमाडौं महानगरपालिकाको हालको प्रशासनिक सांगठानिक संरचनाको पुर्नसंरचना गर्न आवश्यक देखिएकोले ख्यातिप्राप्त प्रशासनविद्को विज्ञ सेवा समेत लिई २ महिनाभित्र महानगरपालिकाको संगठन सर्वेक्षण गरी दरबन्दी र कार्यविवरण सहितको संगठन र विकास प्रतिवेदन तयार गरी पेश गर्न काठमाडौं महानगरपालिका नगर कार्यपालिकाको कार्यालयलाई निर्देशन दिने ।

७. मुलुकको एकमात्र राजधानी शहर काठमाडौं महानगरपालिका क्षेत्रमा साविक देखि सञ्चालनमा आएका भाडाका ट्याक्सीहरु मिटरमा गुडनुपर्ने कानूनी व्यवस्थाको पालना नभएको, ट्याक्सीहरु पुराना समेत भएको भनी प्राप्त जनगुनासोलाई दृष्टिगत गरी उक्त विषयमा सम्बद्ध यातायात व्यवस्था विभाग र उपत्यका ट्राफिक प्रहरी महाशाखा समेतलाई कडा नियमन गर्न अनुरोध गर्ने । यसै सन्दर्भमा १४ जिल्लाका भुकम्प पीडितहरुका लागि काठमाडौं उपत्यकाभित्र सञ्चालन हुने गरी नयाँ ट्याक्सी दर्ता प्रक्रिया अगाडि वढेको सम्बन्धमा काठमाडौं महानगरपालिकाको वढदो ट्राफिक जाम, शहरी प्रदुषण, पार्किंग क्षेत्रको अभाव, नेपाल सरकार र महानगपालिकाको शहरी क्षेत्रमा सर्वसुलभ ठूला यात्रु वस सञ्चालन गर्ने नीति तथा कार्यक्रम समेतका विषयहरु मनन गरेर मात्र उक्त विषयमा आवश्यक निर्णय हुन सम्बद्ध निकायहरुमा सिफारिससाथ अनुरोध गर्ने ।

८. काठमाडौं महानगरपालिकाले विगत वर्षहरु देखि ८८ वर्ष उमेर पुगेका बरिष्ठ जेष्ठ नागरिकहरुलाई सम्मान स्वरुप वार्षिक रु. १० हजार महानगर भत्ता एकमुष्ठ प्रदान गर्दै आएकोमा चालु आर्थिक वर्ष २०७३।७४ का लागि उक्त भत्ता रकममा वृद्धि गरी रु. १२ हजार पुर्‍याउने र सो भत्ता रकम तत्काल वितरण गर्ने आवश्यक व्यवस्था मिलाउन काठमाडौं महानगरपालिका, नगर कार्यपालिकाको कार्यालयलाई निर्देशन दिने ।